**ओ३म्..**

# महाभारतका १८ अक्षौहिणी सेना र कुरुक्षेत्रको क्षेत्रफल



-प्रेम आर्य, दोहा-कतार

- **सनातन वैदिक इतिहास र महाभारत युद्धलाई कपोलकल्पित र झुटो हो भन्नेहरुको गालामा जोरदार झापड लगाउने अत्यन्त ज्ञानवर्धक लेखः**

**युद्धका लागि आवश्यक सैनिक, रथादि वाहन, घोडसवार आदिको वर्गीकरण र सेनाको संरचनाः**

कुनै पनि अक्षौहिणी सेनाका चार विभाग हुन्थे, जसलाई **चतुरंगिणी सेना** भनिन्थ्योः

१- गज (हात्ती सवार)
२- रथ (रथी)
३- घोडा (घोडसवार)
४- सैनिक (पैदल सिपाही)

**अक्षौहिणी सेनाः** अक्षौहिणी संस्कृतको शब्द हो जुन प्राचीन कालमा सेनाको माप हुने गर्दथ्यो। विभिन्न स्रोतहरुमा यसको संख्या बारे केहि-केहि अंतर अवस्य पाइन्छ। महाभारत अनुसार यसमा २१,८७० रथ, २१,८७० हात्ती, ६५, ६१० घोडसवार एवं १,०९,३५० पैदल सैनिक हुन्छन्। (महाभारत, आदि पर्व- २/१५-२३)

जसअनुसार यिनको अनुपात १रथः१गजः३घोडसवारः५पैदल सैनिक हुन्छ। यसको प्रत्येक भागको संख्याको अंकहरुको कुल जम्मा १८ आउँछ। एउटा घोडामा एक जना सवारी बस्छ, हात्तीमा कम से कम दुई सवारी अवस्य हुनु पर्दछ, एक पीलवान (माहुते) र अर्को लड्ने वाला योद्धा, यस्तै प्रकारले एक रथमा दुई सवारी र चार घोडा अवस्य हुन्छन्, यसरि महाभारतको सेनामा मनुष्यहरुको संख्या कम से कम ४६,८१,९२० र घोडाहरुको संख्या (रथमा जोडिएकालाई मिलाएर) २७,१५,६२० भयो। यस संख्यामा दुवै तिरका प्रमुख प्रमुख योद्धा कुरूक्षेत्रको मैदानमा एकत्र मात्र भएनन् कि मारिए पनि।

**एक अक्षौहिणी सेना नौ भागमा बाँडिएको हुन्थ्योः-**

१- पत्तिः १ गज + १ रथ + ३ घोडा + ५ पैदल सिपाही।
२- सेनामुखः (३ x पत्ति)= ३ गज + ३ रथ + ९ घोडा + १५ पैदल सिपाही।

३- गुल्मः (३ x सेनामुख) = ९ गज + ९ रथ + २७ घोडा + ४५ पैदल सिपाही।
४- गणः (३ x गुल्म) = २७ गज + २७ रथ + ८१ घोडा + १३५ पैदल सिपाही।
५- वाहिनीः (३ x गण) = ८१ गज + ८१ रथ + २४३ घोडा + ४०५ पैदल सिपाही।
६- पृतनाः (३ x वाहिनी) = २४३ गज + २४३ रथ + ७२९ घोडा + १२१५ पैदल सिपाही।
७- चमूः (३ x पृतना) = ७२९ गज + ७२९ रथ + २१८७ घोडा + ३६४५ पैदल सिपाही।
८- अनीकिनीः (३ x चमू) = २,१८७ गज + २,१८७ रथ + ६,५६१ घोडा + १०,९३५ पैदल सिपाही।
९- **अक्षौहिणीः** (१० x अनीकिनी)=२१,८७० गज + २१,८७० रथ + ६५,६१० घोडा + १,०९,३५० पैदल सिपाही।

**एक अक्षौहिणी सेनाः**

यस प्रकार एक अक्षौहिणी सेनामा हात्ती, रथ, घोडसवार तथा सिपाहीको सेना निम्नलिखित हुन्थ्योः-

१- गज = २१,८७०
२- रथ = २१,८७०
३- घोडसवार = ६५,६१०
४- पैदल सिपाही = १,०९,३५०

यिनमा चार अंगका २,१८,७०० सैनिक बराबर बराबर-बाँडिएका हुन्थे। प्रत्येक इकाईको एक प्रमुख हुन्थ्यो।

१- पत्ती, सेनामुख, गुल्म तथा गणका नायक **अर्धरथी** हुन्थ्यो।
२- वाहिनी, पृतना, चमु र अनीकिनीका नायक **रथी** हुन्थ्यो।
३- एक अक्षौहिणी सेनाको नायक **अतिरथी** हुन्थ्यो।
४- एक भन्दा अधिक अक्षौहिणी सेनाको नायक सामान्यतः एक **महारथी** हुन्थ्यो।

**पाण्डवको सेनाः**

पाण्डवहरु संग ७ अक्षौहिणी सेना थिएः

१- १,५३,०९० रथ।
२- १,५३,०९० गज।
३- ४,५९,२७० अश्व।
४- ७,६५,२७० पैदल सैनिक।

**कौरवको सेनाः**

कौरवहरु संग ११ अक्षौहिणी सेना थिएः

१- २,४०,५७० रथ।
२- २,४०,५७० गज।
३- ७,२१,७१० अश्व।
४- १२,०२,८५० पैदल सैनिक।

**महाभारतमा प्रमाणः**

अक्षौहिणी हि सेना सा तदा यौधिष्ठिरं बलम्।
प्रविश्यान्तर्दधे राजन्सागरं कुनदी यथा ॥
(उद्योगपर्व,१९/६)
महाभारतको युद्धमा १८ अक्षौहिणी सेना नष्ट भएको थियो।
महाभारतको आदिपर्व र सभापर्वका अनुसार-
अक्षौहिण्याः परीमाणं नराश्वरथदन्तिनाम्।
अक्षौहिणी सेनामा कति पैदल, घोडा, रथ र हात्ती हुन्छन्? यसको हामीलाई यथार्थ वर्णन सुनाउनुहोस्, किनकि तपाईलाई सबै ज्ञात छ।
यथावच्चैव नो ब्रूहि सर्व हि विदितं तव॥ सौतिरूवाच
उग्रश्रवाले भने- एक रथ, एक हात्ती, पाँच पैदल सैनिक र तीन घोडालाई सेनाका मर्मज्ञ विद्वानहरुले **'पत्ति'** भनेकाछन्॥
एको रथो गजश्चैको नराः पञ्च पदातयः।
त्रयश्च तुरगास्तज्ज्ञैः पत्तिरित्यभिधीयते॥
पत्तिको तिगुना संख्यालाई विद्वान पुरुषले **'सेनामुख'** भनेका छन्। तीन 'सेनामुख'लाई एक **'गुल्म'** भनिन्छ॥
एको रथो गजश्चैको नराः पञ्च पदातयः।
पत्तिं तु त्रिगुणामेतामाहुः सेनामुखं बुधाः।
त्रीणि सेनामुखान्येको गुल्म इत्यभिधीयते॥
तीन गुल्मको एक **'गण'** हुन्छ, तीन गणको एक **'वाहिनी'** हुन्छ र तीन वाहिनिलाई सेनाको रहस्य जान्ने विद्वानहरुले **'पृतना'** भनेका छन्।
त्रयो गुल्मा गणो नाम वाहिनी तु गणास्त्रयः।
स्मृतास्तिस्त्रस्तु वाहिन्यः पृतनेति विचक्षणैः॥
तीन पृतनाको एक **'चमू'** तीन चमूको एक **'अनीकिनी'** र दस अनीकिनीको एक **'अक्षौहिणी'** हुन्छ। यो विद्वानहरुको कथन हो।
चमूस्तु पृतनास्तिस्त्रस्तिस्त्रश्चम्वस्त्वनीकिनी।
अनीकिनीं दशगुणां प्राहुरक्षौहिणीं बुधाः॥
श्रेष्ठ ब्राह्मणहरु हो! गणितका तत्त्वज्ञ विद्वानहरुले एक अक्षौहिणी सेनामा रथहरुको संख्या एक्काइस हजार आठ सय सत्तरी (२१,८७०) भनेका छन्। हात्तीहरुको संख्या पनि यतिनै भन्नु पर्छ।
अक्षौहिण्याः प्रसंख्याता रथानां द्विजसत्तमाः।
संख्या गणिततत्त्वज्ञैः सहस्राण्येकविंशतिः॥
शतान्युपरि चैवाष्टौ तथा भूयश्च सप्ततिः।
गजानां च परीमाणमेतदेव विनिर्दिशेत्॥
निष्पाप ब्राह्मणहरु हो! एक अक्षौहिणीमा पैदल मनुष्यहरुको संख्या एक लाख नौ हजार तीन सय पचास (१,०९,३५०) जान्नु पर्दछ।
ज्ञेयं शतसहस्रं तु सहस्राणि नवैव तु।
नराणामपि पञ्चाशच्छतानि त्रीणि चानघाः॥
एक अक्षौहिणी सेनामा घोडाहरुको ठीक-ठीक संख्या पैसठ्ठी हजार छ सय दस (६५,६१०) भनिएको छ।
पञ्चषष्टिसहस्राणि तथाश्वानां शतानि च।
दशोत्तराणि षट् प्राहुर्यथावदिह संख्यया॥
तपोधनहरु हो! संख्याको तत्त्व जान्ने विद्वानहरुले यसैलाई **अक्षौहिणी** भनेका छन् जसमा मैले तपाइँहरुलाई विस्तारपूर्वक भनेको छु।

एतामक्षौहिणीं प्राहुः संख्यातत्त्वविदो जनाः।
यां वः कथितवानस्मि विस्तरेण तपोधनाः॥
श्रेष्ठ ब्राह्मणहरु हो! यहि गणना अनुसार कौरव र पाण्डव दुवै सेनाहरुको संख्या अठार अक्षौहिणी थीयो।
एतया संख्यया ह्यासन् कुरुपाण्डवसेनयोः।
अक्षौहिण्यो द्विजश्रेष्ठाः पिण्डिताष्टादशैव तु॥
अद्भुत कर्म गर्नेहरु कालको प्रेरणाले समन्तपञ्चक क्षेत्रमा कौरवहरुलाई निमित्त बनाएर त्यत्रो सेना एकत्रित भयो र त्यहीं नाश पनि भयो।
समेतास्तत्र वै देशे तत्रैव निधनं गताः।
कौरवान् कारणं कृत्वा कालेनाद्भुतकर्मणा॥

एक अक्षौहिणीमा २१,८७० रथ, २१,८७० हात्ती, ६५,६१० घोडसवार र १,०९,३५० पैदल सैनिक हुन्छन्।

हरेक रथमा चार घोडा र त्यसको सारथी हुन्छन् जुन बाणहरुले सुसज्जित भएको हुन्छ, उसका दुई साथिहरु संग भाला हुन्छन् र एक रक्षक हुन्छ जसले पछाडी बाट सारथीको रक्षा गर्दछ र एक गाडीवान (चालक) हुन्छ।

हरेक हात्तीमा माहुते र त्यसको पछी एक सहायक जसले कुर्सीको पछाडी बाट हात्तीलाई अंकुश लगाउँछ, कुर्सीमा उसको मालिक धनुष-बाणले सुसज्जित हुन्छ र उसको साथमा उसका दुई साथीहरु हुन्छन् जसले भाला फल्दछन् र त्यसको एक विदूषक हुन्छ जो युद्ध नभएको अवसरमा उसको अगाडी हिंड्छ। तदनुसार रथ र हात्तीमा सवार हुनेहरुको संख्या २,८४,३२३ हुन्छ (एवमेवकानुसार)।

एक अक्षौहिणी सेनामा समस्त जीवधारिहरु (हात्ती, घोडा, र मनुष्यहरु) को कुल संख्या ६,३४,२४३ हुन्छ। अठार अक्षौहिणीको संख्या १,१४,१६,३७४ हुन्छ अर्थात ३,९३,६६० हात्ती, २७,५५,६२० घोडा र ८२,६७,०९४ मनुष्य।

यत्रो विशाल सेनाको विस्तार तथा वर्गीकरण कति गणितज्ञ र वैज्ञानिक स्तरमा हुँदो हो यो हामी स्वयं अनुमान गर्न सक्छौं। धनुर्वेद (जुन यजुर्वेदको उपवेद हो) मा सेनाको संरचना, गठन, सञ्चालन, व्यूह रचना, युद्ध कौशल, रणनीति आदि भली भाँती वर्णित छ।

केहि स्वनामधन्य अति ज्ञानी हिन्दु तथा वामपंथी विचारधाराको इतिहासलाई अध्ययन गर्ने लाल-बुझक्कडहरुले भन्ने गर्दछन् कि कुरुक्षेत्र त यति सानो राज्य थियो त्यसमा यत्रो विशाल सेना हुनु र तिनीहरुका बिचमा युद्ध हुनु तथा मारिएका सैनिकहरुको अन्तेय्ष्टि आदि गर्नु कसरि संभव भयो होला र ? ति अति विशिष्ट ज्ञानीहरुको प्रमुख काम केवल सनातन वैदिक समाज र संस्कृति तथा इतिहास आदिलाई झुटो साबित गर्ने नै हो त्यसैले यस्ता मनगढन्त कुरा गर्ने गर्दछन्। तिनीहरु संग सोध्नु पर्ने हो- के "कुरुक्षेत्र" जुन आजको स्तिथिमा देखिन्छ, त्यसको क्षेत्रफल महाभारत कालमा पनि त्यति नै थियो? तब तिनीहरुको जिब्रोमा भोटे ताल्चा लाग्छ।

**आउनुहोस्, हेरौं त्यति बेला कुरुक्षेत्र कति विशाल थियोः-**

## कुरु-जनपदः

महाभारत कालिन प्रसिद्ध जनपद जसको स्थिति वर्तमान दिल्ली-मेरठ प्रदेशमा थीयो। महाभारतकालमा हस्तिनापुर कुरु-जनपदको राजधानी थीयो। महाभारत बाट ज्ञात हुन्छ कि कुरुको प्राचीन राजधानी खांडवप्रस्थ थीयो। महाभारतको अनेकौं वर्णन बाट विदित हुन्छ कि कुरुजांगल, कुरु र कुरुक्षेत्र यस विशाल जनपदका तीन मुख्य भाग थिए। कुरुजांगल यस प्रदेशको वन्यभागको नाम थियो जसको विस्तार सरस्वती तटमा स्थित काम्यकवन सम्म थियो। खांडव वन पनि जसलाई पाण्डवहरुले जलाएर

त्यसको स्थानमा इन्द्रप्रस्थ नगर बसाएका थिए, यहि जंगली भागमा सम्मिलित थियो र यो वर्तमान नया दिल्लीको पुरानो किल्ला र कुतुबको  आसपास रहेको थियो।

मुख्य कुरु जनपद हस्तिनापुर (मेरठ जिल्ला, उ.प्र.) को निकट थियो। कुरुक्षेत्रको सीमा तैत्तरीय आरण्यक अनुसार यस प्रकार छ- यसको दक्षिणमा खांडव, उत्तरमा तूर्ध्न र पश्चिममा परिणाह स्थित थियो। संभवतः यी सब विभिन्न वनहरुको नाम थियो। कुरु जनपदमा वर्तमान थानेसर, दिल्ली र उत्तरी गंगा द्वाबा (मेरठ-बिजनौर जिल्लाको भाग) शामेल थिए। महाभारतमा भारतीय कुरु-जनपदहरुलाई दक्षिण कुरु भनिएको छ र उत्तर-कुरुहरुका साथै तिनको उल्लेख पनि छ।

अंगुत्तर-निकायमा '१६ महाजनपदहरुको सूचीमा कुरुको पनि नाम छ जसबाट यस जनपदको महत्ताको काल बुद्ध तथा त्यसको पूर्ववर्ती समय सम्म प्रमाणित हुन्छ। महासुत्त-सोम-जातकका अनुसार कुरु जनपदको विस्तार तीन सय कोस थियो। जातकहरुमा कुरुको राजधानी इन्द्रप्रस्थमा बताईएको छ। हत्थिनापुर या हस्तिनापुरको उल्लेख पनि ति जातकहरुमा छ। यस्तो भान हुन्छ कि यस काल पश्चात र मगधको बढ्दै गरेको शक्तिका फलस्वरूप जसको पूर्ण विकास मौर्य साम्राज्यको स्थापनाका साथ भयो, कुरु जसको राजधानी इस्तिनापुर राजा निचक्षुको समयमा गंगामा बगेको थियो र जसलाई छोडेर यस राजाले वत्स जनपदमा गएर आफ्नो राजधानी कौशांबीमा बनाएको थीयो; विस्तारै-विस्तारै विस्मृतिको गर्तमा विलीन भयो। यस तथ्यको ज्ञान हामीलाई जैन उत्तराध्यायन सूत्रबाट हुन्छ जस अनुसार बुद्धकालमा कुरुप्रदेशमा कैयौं स-साना राज्यहरुको अस्तित्वको ज्ञात हुन्छ।

हे विशिष्ट ज्ञानिहरु हो..! अब भन त, त्यस कालमा जब कुरुक्षेत्र नै यत्रो विशाल थियो भने यत्रो विशाल सेना र युद्ध कसरि हुन सक्दैन..??? अब बुद्धिमान व्यक्तिहरुले स्वयं विचार गर्नु..!